प्रकाशिका : विद्या वज्राचार्य

प्रथम संस्करण : १००० प्रति

प्रकाशन वर्ष : बु.सं २५६२
ने.सं ११३८
वि.सं २०७५
इ.सं २०१८

सर्वाधिकार : लेखकमा सुरक्षित

मूल्य : १५०|-
(अर्को पुस्तक प्रकाशनको लागि सहयोगार्थ)

मुद्रण : समुद्र प्रिन्टर्स
ब्रम्हटोल, काठमाडौं ।

# प्रकाशिकाको मन्तब्य

# सादर समर्पण



दिवंगत श्रीमान् लोकवज्र वज्राचार्य



दिवंगत भाइ जुद्धरत्न ब्रज्राचार्य

विश्वका विभिन्न धर्मानुयायीहरूले विभिन्न भाषाद्वारा पाठ, जप, स्तोत्र, स्तुति र भजन गर्ने गरे झै बुद्धधर्मको अवगत गर्न विभिन्न भाषाहरूमध्ये संस्कृत, चिनियाँ, जापानी, अंग्रेजी, तिब्बति, नेवारी, पालि र नेपाली नै विद्यमान छन् । साँच्चिकै भन्ने हो भने आधुनिक युगमा संसारभरि बौद्ध धर्मको प्रचारप्रसार निकै अग्रसर भइरहेका छन् किनकि भगवान् शास्ता एक मानवतावादी मनोबैज्ञानिक, चिकित्सक, शान्तिप्रतीक आदि हुन्। बौद्धदर्शनको ज्ञानोपार्जन गर्ने प्रमुख भाषा पालि हो । पालि र संस्कृत भाषा हुबहु मिले को पाइन्छ। हुन त बौद्धधर्म प्रति श्रद्धा र आस्था राखेर अध्ययन अध्यापन गर्न पालिभाषा निकै सदुपयोगी छ । यस भाषालाई बुद्धकालीन जनभाषा भनिन्छ । थेरवादी बौद्धदर्शनका विद्यार्थीहरूको निम्ति पाली ब्याकरण अतिजरूरी पुस्तक हो ।

दिवंगत हुनुभएका मेरा श्रीमान् लोकवज्र वजाचार्य र मेरो एउटै भाइ जुद्धरत्न वज्राचार्यका नाममा पूजनीय सरणंकर भन्तेज्यूवाट रचित सरल पालि ब्याकरण ग्रन्थ प्रकाशित गर्न पाउँदा म उपासिका विद्याकुमारी

वज्राचार्य सहर्ष प्रसन्न छु। मलाई यस कार्यमा आर्थिक सहयोग गर्नमा तन, मन र धन लगाएर सक्दो मदत गर्ने परिवार तथा आफन्तजनप्रति धन्यवाद दिन्छु। साथै प्रकाशन कार्यमा आवश्यक सहयोग गर्ने प्रेरणा दिनुहुने दाइ केशव चित्रकार तथा सरल पालि ब्याकरणका रचनाकार आदरणीय भन्ते सरणंकरज्यूमा हृदयदेखि वन्दना गर्न चाहन्छु। सम्पूर्ण मेरा परिवार तथा आफन्तजनहरूको सुस्वास्थ्य र मंगलमय कामना गर्दछु।

| | | |
|---|---|---|
| मेरा छोरा छोरीहरू | : | डा. उदयवज्र वज्राचार्य |
| | | डा. विजया वज्राचार्य (शाक्य) |
| | | डा. जयेन्द्र वज्राचार्य |
| भाइ बुहारी | : | उषा वज्राचार्य |
| बुहारीहरू | : | क्यासिरिना वज्राचार्य |
| | | अञ्जु वज्राचार्य |
| बहिनीहरू | : | तिर्थकुमारी वज्राचार्य |
| | | चपलाकुमारी वज्राचार्य |
| ज्वाइँहरू | : | सुनिल शाक्य |
| | | खिलानाथ घिमिरे/खलनाथ घिमिरे/ |
| | | मोहित वज्राचार्य |
| भद्दाभद्दैहरू | : | निशा वज्राचार्य |
| | | उज्ज्वल वज्राचार्य |
| | | त्रिज्वल वज्राचार्य |
| भतिजाहरू | : | राजेश वज्राचार्य |
| | | शैलेश वज्राचार्य |
| | | सुजन घिमिरे |
| भतिजी बुहारीहरू | : | प्रमिला वज्राचार्य |
| | | पद्मा वज्राचार्य |

|  |  |  |
|---|---|---|
|  |  | रुपा वज्राचार्य |
| नातिनातिनीहरू | : | सुबीज शाक्य, यश्विनी वज्राचार्य, अभिजय वज्राचार्य, अनुश्री वज्राचार्य, प्रयुष वज्राचार्य, आरूष वज्राचार्य |

समस्त परिवार तथा आफन्तजनप्रति भगवान बुद्धको निगाह र आशिर्वादद्वारा सदैव स्वस्थ र निरोगी हुनको लागि वन्दना गर्दछौं । साथै प्रस्तुत पुस्तक किनिदिनु हुने महानुभावहरूको रकम अर्को पुस्तक प्रकाशित गर्न अवश्य पनि सहयोग हुनेछ भन्ने म विद्याकुमारी वज्राचार्य आशा गर्दछु ।

भवतु सब्ब मंगलं ।

# लेखकको मन्तब्य

यो निरूक्तिं न जानाति, जानाति पिटकत्तयं
पदे पदे विकञ्चेय्य, वने अन्ध गजो विय

त्रिपिटकको ज्ञान भएर पनि यदि ब्याकरणको ज्ञान छैन भने अन्धो हात्ती जंगलमा पाइलै पिच्छे ठक्कर खाने झै हरेक ठाउँमा ठक्कर खानेछ भन्ने यस गाथाले पालि ब्याकरणको महत्व दर्शाउँदछ । अहिले विद्यमान सम्पूर्ण त्रिपिटक, अट्ठकथा, टीका आदि सम्पूर्ण ग्रन्थहरू पालि भाषामा नै लेखिएको र बुद्धदेशित भाषा पनि पालि नै भएकोले ती ग्रन्थहरू अध्यनार्थ पनि पालि भाषाको आवश्यकता देखिन्छ। अनुवादित त्रिपिटकबाट त्यसको सार बुझ्न सक्ने तर शब्दको मूल मर्म बुझ्नको लागि पालिको ज्ञान हुनु आवश्यक छ ।

नेपालमा पालि भाषा अध्ययनको लागि केन्द्र तथा ग्रन्थको अभाव देखिन्छ । पालि भाषा अध्ययन गर्न चाहने जो कोहीलाई पनि घरमै बसी बसी पालि भाषा सिक्न सकोस् भन्ने हेतुले अति सरल तरिकाले यो ग्रन्थ तयार पारेको छु ।

यस पालि ब्याकरण ग्रन्थ तयार पार्नको लागि विशेष सहयोग गर्नुभएको आनन्दकुटी विहारवासी भिक्षु नारदप्रति कृतज्ञता । सश्रद्धा प्रुफ हेरिदिनु भएको श्री मदन रत्न मानन्धरज्यूप्रति कृतज्ञता । यस पुस्तक प्रकाशनको लागि सम्पूर्ण आर्थिक ब्यय ब्यहोरिदिनु भएका उपासिका विद्याकुमारी वज्राचार्यप्रति कृतज्ञता। वहाँलाई यस पुण्य कार्यको लागि प्रेरित गर्नुभएका केशव चित्रकार दाइलाई पनि धेरै धन्यवाद। प्रेससंग सम्बन्धित सम्पूर्ण कार्यको लागि सहयोग गर्नुहुने श्री विवेक महर्जनज्यूलाई तथा समयमै प्रकाशित गरिदिनु भएका प्रेस परिवारलाई धेरै धन्यवाद । अन्तमा यस कार्यको लागि प्रत्यक्ष अप्रत्यक्ष सहयोग गर्नुहुने सबैमा आभार ब्यक्त गर्न चाहन्छु ।

केही गल्तिहरू भएमा सुझाव अपेक्षा पनि गर्दछु ।

भिक्षु सरणंकर
आनन्दकुटी विहार
स्वयम्भू -१५, काठमाडौं

# विषय - सुची

# पठमो पाठ
# पहिलो पाठ

**पाठको लक्ष्य : –**

| |
|---|
| पालि अक्षर माला, स्वर र व्यञ्जनका बारेमा परिचय |
| पालि अक्षर माला र नेपाली वर्णमालामा फरक |
| स्वर – व्यञ्जन जोडेपछि अक्षर बन्छ भन्ने बारेमा परिचय |

(अ) **पालि भाषाको वर्णमालामा अक्षर ४१ वटा छन् ।**

यी अक्षरहरू स्वर र व्यञ्जन गरी दुई भागमा बाँडिएका छन् । स्वर अक्षर ८ वटा छन् । यो पुनः ह्रस्व – दीर्घ गरी दुई भागमा बाँडिएका छन् ।

अ इ उ ------------- ह्रस्व

आ ई ऊ ए ओ ----- दीर्घ

**व्यञ्जन अक्षर ३३ वटा छन् ।**

| | | | | |
|---|---|---|---|---|
| क | ख | ग | घ | ङ |
| च | छ | ज | झ | ञ |
| ट | ठ | ड | ढ | ण |
| त | थ | द | ध | न |
| प | फ | ब | भ | म |
| य | र | ल | व | |
| स | ह | ळ | अं | |

अरूको सहयोग बिना आफै उच्चारण हुने भएकोले स्वर अथवा प्राणाक्षर भनिन्छ । बाँकि अक्षर ३३ वटा स्वर सम्बन्ध नभई उच्चारण गर्न सकिंदैन। व्यञ्जन उच्चारण गर्दा स्वर अक्षर जोडी सजिलोसंग उच्चारण गर्न सकिन्छ । स्वर अक्षर व्यञ्जनसंग जोडिँदैन (सम्बन्ध हुँदैन) भने व्यञ्जन अक्षर उच्चारण गर्न गाऱ्हो हुन्छ ।

ए, ओ अक्षर दुईटा कुनै कुनै ठाउँमा ह्रस्व हुन्छ । त्यस्तै गरी कुनै कुनै ठाउँमा नेपाली अक्षर ए,ओ जस्तै दीर्घ उच्चारण हुन्छ। जोडेको अक्षर अगाडि ए,ओ अक्षर दुई वटा भयो भने ह्रस्व हुन्छ। त्यस्तै गरी जोडेको अक्षर छैन भने ह्रस्व हुँदैन, त्यहाँ दीर्घ उच्चारण हुन्छ ।

**उदाहरण:**

एतथ, खेत्त, सेट्ठी<br>ओट्ठो, ओक्कमति {ह्रस्व}

(आ) **पालि भाषाको ३३ वटा व्यञ्जन अक्षरमा स्वर अक्षर ८ वटा सम्बन्ध भए (जोडे) पछि विभिन्न रूप लिन्छ । क् व्यञ्जन अक्षरमा स्वर ८ वटा जोडे पछि यसरी रूप लिन्छ ।**

| | |
|---|---|
| क् + अ = क | क् + उ = कु |
| क् + आ = का | क् + ऊ = कू |
| क् + इ = कि | क् + ए = के |
| क् + ई = की | क् + ओ = को |

बाँकी व्यञ्जन अक्षर पनि यसरी नै बन्छन् ।

### (इ) नेपाली वर्णमाला अक्षर

स्वर अक्षर :–

अ आ इ ई उ ऊ ऋ ॠ ऌ ॡ ए ऐ ओ औ अं अः

व्यञ्जन अक्षर :–

| | | | | |
|---|---|---|---|---|
| क | ख | ग | घ | ङ |
| च | छ | ज | झ | ञ |
| ट | ठ | ड | ढ | ण |
| त | थ | द | ध | न |
| प | फ | ब | भ | म |
| य | र | ल | व | |
| श | ष | स | ह | |
| क्ष | त्र | ज्ञ | | |

| पालि– अक्षर वर्णमाला | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| अक्षर उत्पत्ति स्थान | स्वर | | व्यञ्जन | | | | | | |
| | | | वर्णाक्षर | | | | | अवर्णाक्षर | |
| | | | अघोष | | घोष | | | | |
| कण्ठज | अ | आ | क | ख | ग | घ | ङ | ह | |
| तालुज | इ | ई | च | छ | ज | झ | ञ | य | |
| मूर्धज | | | ट | ठ | ड | ढ | ण | र | ल |
| दन्तज | | | त | थ | द | ध | न | ल | स |
| ओष्ठज | उ | ऊ | प | फ | ब | भ | म | | |
| कण्ठ तालुज | | ए | ० – बिन्दु सबै वर्गाक्षर * “स” अघोस | | | | | | |

| | | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|---|
| कण्ठ ओष्ठज | | ओ | * व ल घोष | | | | | | |
| दन्त ओष्ठज | | | व | | | | | | |
| नासिक | | | ङ | ञ | ण | न | म | | |
| उरज | | | ”ब्रम्ह ब्राम्हण” भन्ने यहाँ “म”कारसंग संयोग भएको (जोडेको) अगाडि भएको “ह”कार हो । | | | | | | |
| अन्तस्थ | | | य | र | ल | ळ | | | |
| निग्गहीत | | | अं (०) | | | | | | |

**वर्गाक्षर :–** व्यञ्जन अक्षरको “क” देखि “म” सम्म भएका अक्षरहरू एक वर्गमा पाँच वटा गरेर पाँच भागमा बाँडिएका छन् । यसलाई वर्गाक्षर भनेर चिनिन्छन् । ती वर्ग चिनाउने त्यस वर्गको अगाडिको अक्षरले हो । यी अक्षरहरू छोडेर बाँकी अक्षरहरू अवर्गाक्षर हुन् ।

१) क वर्ग :– क ख ग घ ङ
२) च वर्ग :– च छ ज झ ञ
३) ट वर्ग :– ट ठ ड ढ ण
४) त वर्ग :– त थ द ध न
५) प वर्ग :– प फ ब भ म

**शिथिल :–**

थोरै (अलिकति) उत्साहले उच्चारण गर्ने अक्षर शिथिल अथवा अल्पप्राण भनिन्छ ।

क ग ङ च ज ञ ट ड ण त
द न प ब म य र ल व

**ध्वनित :–**

धेरै उत्साहले उच्चारण गर्ने अक्षर ध्वनित अथवा महाप्राण भनिन्छ ।

ख घ छ झ ठ ढ थ ध

फ भ

**अघोष :–**

वर्गाक्षरहरूको पहिलो, दोस्रो अक्षर र स पनि अघोष हो ।

क ख च छ ट ठ त थ

प फ स

**घोष :–**

ल भन्ने अन्तिम अक्षरसम्म बाँकी भएका अरू सबै अक्षरहरू घोष हुन् । निग्गहीत (०) कुनै प्रभेदमा पर्दैन ।

ग घ ङ ज झ ञ ड ढ

ण द ध न ब भ म य

र ल व ह ळ

**नासिक :–**

ती वर्गाक्षरको अन्तिममा भएका पांच वटा अक्षर नासिक हो । किनकि ती पांच वटा अक्षर उच्चारण गर्दाखेरि नाकबाट उच्चारण गरिन्छ । त्यसकारणले यी अक्षरहरू नासिक भनिन्छ । त्यस्तै गरी नासिक अक्षर हरूलाई वर्गान्त पनि भनिन्छ ।

ङ ञ ण न म

**अन्तःस्थ :–**

उत्पत्ति स्थान अलिकति (थोरै) स्पर्श गरेर उच्चारण हुने अक्षर अन्तःस्थ

नाम भनेर चिनिन्छन् ।

य र ल व

**निग्गहीत :–**

(अ)० भन्ने यहाँ अकारको पछाडि भएका (०) बिन्दुलाई निग्गहीत भनेर भनिन्छ । यो एक्लै उच्चारण गर्न नसक्ने भएकोले अकारसंग नजिक गरेर उच्चारण गर्छ ।

**कण्ठज :–**

यी अक्षरहरू घाँटीबाट उच्चारण हुन्छन् , उत्पत्ति हुन्छन् ।

**तालुज :–**

यी अक्षरहरू तालुजबाट (गिजाबाट) उच्चारण हुन्छन् , उत्पत्ति हुन्छन् ।

**मूर्धज :–**

यी अक्षरहरू गिजाको माथिबाट उच्चारण हुन्छ , उत्पत्ति हुन्छन् ।

**दन्तज :–**

यी अक्षरहरू दांतबाट उच्चारण हुन्छन्, उत्पत्ति हुन्छन् ।

**ओष्ठज :–**

यी अक्षरहरू ओठबाट उच्चारण हुन्छन् , उत्पत्ति हुन्छन् ।

**कण्ठओष्ठज :–**

यी अक्षरहरू घाँटी र ओठबाट उच्चारण हुन्छन् , उत्पत्ति हुन्छन् ।

**कण्ठतालुज :–**

यी अक्षरहरू घाँटी र गिजाबाट उच्चारण हुन्छन् , उत्पत्ति हुन्छन् ।

**दन्तओष्ठज :–**

यी अक्षरहरू दाँत र ओठबाट उच्चारण हुन्छन्, उत्पत्ति हुन्छन् ।

**अभ्यास :–**

१) पालि भाषाको अक्षरमाला लेख्नुहोस् ?

२) यसका प्रभेदहरू छुट्याएर देखाउनुहोस् ?

३) पालि भाषाको अक्षरमाला र नेपाली अक्षरमालामा फरक देखाउनुहोस् ?

४) घोष – अघोष छुट्याएर देखाउनुहोस् ?

५) तल देखाएका अक्षरहरूमा स्वर व्यञ्जन छुट्याएर लेख्नुहोस् ?

| | | | |
|---|---|---|---|
| (i) | क | (vi) | ति |
| (ii) | गा | (vii) | नी |
| (iii) | खू | (viii) | यू |
| (iv) | चे | (ix) | रो |
| (v) | दु | | |

# दुतियो पाठो
# दोस्रो पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | वर्तमान काल प्रथम पुरुष एक/बहुवचन वाक्य (वचन) बारेमा परिचय |
| II | नाम पदहरूको प्रथम विभक्ति, दुतिया विभक्ति एक/बहुवचन बारेमा परिचय । |
| III | वाक्यहरूमा (वचनहरूमा) उक्त कर्तृ प्रथम विभक्तिबाट लेखिन्छन् । कर्तृको क्रियामा भाजन हुने (पर्ने) पद दुतिया विभक्तिबाट लेखिन्छन् भन्ने बारेमा परिचय । |

**(अ)**

१) “बालक घर जान्छ” । यो वाक्यमा “जान्छ” भन्ने वाक्यांश चाहिँ क्रिया हो । बालक कर्तृ हो । क्रिया गर्नेलाई कर्तृ भनिन्छ । यो प्रथम विभक्तिमा हुन्छ ।

**उदाहरण :–**

कुमारो गेहं गच्छति ।

बालक (बच्चा) घर जान्छ ।

२) “धम्मपालले रुख काट्छ” । यो वाक्यमा काट्छ भन्ने वाक्यांश चाहिँ क्रिया हो । धम्मपालले काट्नेमा पर्ने (ग्रहण हुने) रुख हो । कर्तृको क्रियामा भाजन हुने (पर्ने) कर्म हो । रुख काट्छ भनेकोमा रुख चाहिँ कर्म हो । यो कर्म दुतिया विभक्तिमा हुन्छ ।

**उदाहरण :–**

धम्मपालो रुक्खं छिन्दति ।

धम्मपालले रुख काट्छ ।

| कर्तृ | कर्म | क्रिया |
|---|---|---|
| कुमारो<br>धम्मपालो | गेहं<br>रुक्खं | गच्छति<br>छिन्दति |

(आ)

| | | |
|---|---|---|
| पिता<br>माता<br>सो<br>कुमारो<br>बुद्धदासो<br>धनपालो<br>सुजाता<br>मित्तो<br>विसाका<br>मल्लिका | विहारं<br>गामं<br>पण्णसालं<br>कूपं<br>नदिं<br>धम्मपाठसालं<br>गेहं | गच्छति |

| | | |
|---|---|---|
| पितरो | विहारे | |
| मातरो | गामे | |
| ते | पण्णसालयं | गच्छन्ति |
| कुमारा | कूपानि | |
| बुद्धदासा | नदियो | |
| सोमपाला | धम्मपाठसालयं | |
| धनपाला | गेहानि | गच्छन्ति |
| सुजातायो | | |
| मित्ता | | |
| विसाकयो | | |
| मल्लिकायो | | |

**<u>वचन माला</u>**

**<u>नाम पद</u>**

कुमारो – कुमार
गेहं – घर
सोमपालो – सोमपाल
रुक्खं – रुख
बालो – मूर्ख
पण्डितो – पण्डित/बुद्धिमान
देवो – देवता
मनुस्सो – मानिस
बालको – बालक/बच्चा
भिक्खु – भिक्षु

पिता – पिता (बुबा)
माता – आमा
सा – उनी
मित्तो – मित्र/साथी
पापं – पाप
धम्मसालं – धर्मशाला
निब्बानं – निर्वाण
पाठं – पाठ
जेतवनं – जेतवन
कूपं – इनार

**क्रियापद**

उपसंकमति--- नजिक आउँछ

ओभासति --- चम्किन्छ

पचति --- पकाउँछ

लिखति --- लेख्छ

विहरति ---बस्छ

भासति --- भन्छ

देसेति --- देशना गर्छ

पतिगण्हाति --- स्विकार्छ

पठति --- पढ्छ

**सर्वनाम पद**

सो --- ऊ

ते --- उनीहरु

**अभ्यास :–**

(१) **खालि ठाउँमा उचित पद छानेर भर्नुहोस्।**

(सुणाति, पठन्ति, ओभासेन्ति, समादियन्ति,रक्खति)

I देवा जेतवनं ______________________।

II पण्डितो धम्मं ______________________।

III बालका पाठं ______________________।

IV गुणपालो सीलं ______________________।

V ते पञ्चसीलं ______________________।

(२) **तल दिइएका वाक्य पालिमा अनुवाद गर्नुहोस्।**

I धम्मपालले शील आरक्षा गर्छ।

II साथीहरूले किताब लिन्छन्।

III मानिसले धर्म सुन्छ।

IV पण्डितहरू धर्मशालामा जान्छन्।

V मूर्खहरूले पाप गर्दछन्।

(३) **खालि ठाउँमा उचित पद छानेर लेख्नुहोस् ।**

(मनुस्सा, सो, ते, देवा, बुद्धो)

I ________________ बुद्धं वन्दति ।

II ________________ विहारं गच्छति ।

III ________________ धम्मं सुणन्ति ।

IV ________________ पुञ्ञं करोन्ति ।

V ________________ आहारं पतिगण्हन्ति ।

(४) **तल दिएका क्रियापदहरू एकवचनमा भए बहुवचन र बहुवचनमा भए एकवचनमा लेख्नुहोस् ।**

I पचति __________ पकाउँछ ।

II तिट्ठति __________ बस्छ ।

III बसन्ति __________ बस्छन् ।

IV खणति __________ खन्छ ।

V कसन्ति __________ जोत्छन् ।

VI वदन्ति __________ भन्छन् ।

VII वोरोपेति __________ हटाउँछ ।

VIII पज्जलन्ति __________ जल्छन् ।

# ततियो पाठो
# तेस्रो पाठ

**पाठको लक्ष्य :–**

| |
|---|
| वर्तमान काल, मध्यम पुरुष, एकवचन/बहुवचन वाक्य बनाउने तरिका । |

(अ) त्वं पण्णसालं गच्छसि ।
तिमी विहारमा जान्छौ ।

तुम्हे पण्णसालं गच्छथ ।
तिमीहरू विहारमा जान्छौ ।

(आ)

| | | | |
|---|---|---|---|
| त्वं | धम्मपाठसालं गच्छसि<br>पुञ्ञं करोसि<br>दिपं हरसि<br>पुप्फं पुजेसि<br>अट्ठंगसीलं रक्खसि<br>मोक्खं सभासि<br>विहारं गच्छसि | तुम्हे | धम्मपाठसालं गच्छथ<br>पुञ्ञं करोथ<br>दिपं हरथ<br>पुप्फं पुजेथ<br>अट्ठंगसीलं रक्खथ<br>मोक्खं लभथ<br>विहारं गच्छथ |

**वचन माला**

**नाम पद**

पुञ्ञं --- पुण्य

पुप्फं --- फूल

दिपं --- आलोक

धातुमन्दिरं --- धातु मन्दिर

मोक्खं --- मोक्ष/निर्वाण

अट्ठंगसीलं --- अष्टशील

दससीलं --- दशशील

पोत्थकं --- किताब

**क्रियापद**

लभसि – पाउँछस् (पाउँछौ)

हरसि --- लान्छौ

करोसि --- गर्छौ

गण्हासि --- लिन्छौ

अनुमोदसि --अनुमोदन गर्छौ/दिन्छौ

पस्ससि --- हेर्छौ

**सर्वनाम**

त्वं --- तिमी

तुम्हे --- तिमीहरू

**अभ्यास** :–

(१) **खालि ठाउँमा उचित पद छानेर भर्नुहोस्।**

I त्वं विहारं ____________। (गच्छसि/गच्छथ)

II तुम्हे बोधिं ____________। (वन्दसि/वन्दथ)

III त्वं दससीलं ____________। (समादियसि/समादियथ)

IV तुम्हे पोत्थकं ____________। (गण्हासि/गण्हाथ)

V त्वं धातुमन्दिरं____________। (पस्ससि/पस्सथ)

(२) **उचित पद राखेर खाली ठाँउ भर्नुहोस् ।**

I ________________ पण्णसालं गच्छथ ।

II ________________ धम्मपाठसालं गच्छसि ।

III ________________ पुञ्ञं करोथ ।

IV ________________ पोत्थकं गण्हासि ।

V ________________ बुद्धं सरणं गच्छथ ।

(३) **तल दिइएका वाक्य (वचन) पालिबाट लेख्नुहोस् ।**

I तिमीहरू धर्मको शरणमा जान्छौ ।

II तिमीले पुण्य अनुमोदन गर्छौ ।

III तिनीहरू धर्म सुन्छन् ।

IV तिमीले आहार पूजा गर्छौ ।

V तिमीहरु दशशील लिन्छौ ।

(४) **तल दिइएका शब्दहरू एकवचनमा भए बहुवचनमा लेख्नुहोस्, बहुवचनमा भए एकवचनमा लेख्नुहोस् ।**

अच्छादेथ ------ छोप्छ/लुगा लाउँछौ

अतिचरसि ------ दुराचार गर्छन्

कामेसि ------ इच्छा गर्छन्

खादापेथ ------ खुवाउँछौ

चलसि ------ चल्छन्

तायथ ------ रक्षा गर्छौ

दुहसि ------ दुहुन्छन्

पणथ ------ साट्छौ

# चतुत्थो पाठो
# चतुर्थ पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | वर्तमान काल, उत्तम पुरुष, एकवचन/बहुवचन बनाउने तरिकाको बारेमा परिचय । |
| II | पालि वाक्य (वचन) नेपालीमा, नेपाली वाक्य (वचन) पालिमा परिवर्तन गर्न सिकाउने |

**(अ)** अहं बुद्धं सरणं गच्छामि ।
म भगवान बुद्धको शरणमा जान्छु ।

मयं बुद्धं सरणं गच्छाम ।
हामी भगवान बुद्धको शरणमा जान्छौं ।

(आ)

| | | | | |
|---|---|---|---|---|
| अहं | धम्मं सरणं गच्छामि<br>संघं सरणं गच्छामि<br>तिसरणसरणं गच्छामि<br>सीलं समादियामि<br>पञ्चसीलं रक्खामि<br>चेतियं वन्दामि<br>बोधिं वन्दामि<br>दाठाधातुं नमामि | | मयं | धम्मं सरणं गच्छाम<br>संघं सरणं गच्छाम<br>तिसरणसरणं गच्छाम<br>सीलं समादियाम<br>पञ्चसीलं रक्खाम<br>चेतियं वन्दाम<br>बोधिं वन्दाम<br>दाठाधातुं नमाम |

**वचन माला**

| | | |
|---|---|---|
| बुद्धं | --------- | भगवान बुद्ध |
| धम्मं | --------- | धर्म |
| संघं | --------- | संघ |
| सरणं | --------- | शरण |
| सीलं | --------- | शील |
| तिसरणसरण | ---- | त्रिशरण शरण |
| पञ्चसीलं | ---- | पञ्चशील |
| चेतियं | --------- | चैत्य |
| बोधिं | --------- | बोधि रुख/पिपलको रुख |
| दाठाधातुं | ------- | दन्तधातु |
| पण्णसालं | ---- | विहार |
| धम्मपाठसालं | --- | धर्मशाला |

**क्रियापद**

| | | |
|---|---|---|
| गच्छामि | --------- | जान्छु |
| समादियामि | --------- | ग्रहण गर्छु |
| रक्खामि | --------- | आरक्षा गर्छु |
| नमामि | --------- | नमस्कार गर्छु |
| वन्दामि | --------- | वन्दना गर्छु |
| सुणामि | --------- | सुन्छु |
| पुजेमि | --------- | पूजा गर्छु |

**सर्वनाम**

| | | |
|---|---|---|
| अहं | --------- | म |
| मयं | --------- | हामी/हामीहरू |

<u>अभ्यास</u> :–

(१) **खालि ठाउँ भर्नुहोस् ।**

I ________________ विहारं गच्छामि ।

II ________________ पण्णसालं गच्छाम ।

III ________________ धम्मपाठसालं गच्छाम ।

IV ________________ पञ्चसीलं रक्खामि ।

V ________________ धम्मं सुणाम ।

(२) **तल दिइएका वाक्य (वचन) नेपालीमा लेख्नुहोस् ।**

I मयं विहारं गच्छाम ।

II अहं पण्णसालं गच्छामि ।

III मयं पञ्चसीलं समादियाम ।

IV मयं धम्मं सुणाम ।

V अहं सीलं रक्खामि ।

(३) **तल दिइएका वाक्य (वचन) पालिबाट लेख्नुहोस् ।**

I हामीहरू धर्मको शरणमा जान्छौं ।

II म बोधिलाई नमस्कार गर्छु ।

III हामीहरू दन्तधातुलाई नमस्कार गर्छौं ।

IV हामीहरू विहारमा जान्छौं ।

V म संघको सरणमा जान्छु ।

(४) **यहांसम्म पढेको सबै क्रिया वर्तमान हो । यी क्रियापद प्रथम/मज्झिम/उत्तम/पुरुष तीन वटा एकवचन/बहुवचन गरी यसरी लेखिन्छ ।**

**उदाहरण :–**

| | एक वचन | बहुवचन |
|---|---|---|
| पठम पुरुस | गच्छति (जान्छ) | गच्छन्ति (जान्छन्) |
| मज्झिम पुरुस | गच्छसि (जान्छौ) | गच्छथ (जान्छौ) |
| उत्तम पुरुष | गच्छामि (जान्छु) | गच्छाम (जान्छौं) |

**तल दिइएका क्रियापदहरूलाई रूप चलान गर्नुहोस् ।**

I पचति __________ पकाउँछ ।

II तिट्ठति __________ बस्छ ।

III बसति __________ (वास भूमि) (बस्छ) ।

IV खणति __________ खन्छ ।

V कसति __________ जोत्छ ।

# पञ्चमो पाठो
# पाँचौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | भविष्य काल प्रथम पुरुष एकवचन/बहुवचन वाक्य (वचन) बनाउने बारेमा परिचय । |
| II | वर्तमान क्रियापदहरू छुट्याएर भविष्यकाल क्रियापद बनाउने परिचय |

(अ) कुमारो अन्नं ददिस्सति ।
कुमारले आहार दिनेछ ।

कुमारा अन्नानि ददिस्सन्ति ।
कुमारहरूले आहार दिनेछन् ।

(आ)

I राजा अस्सं आरुहिस्सति ।
II मित्ता गेहानि गमिस्सन्ति ।
III पालको मूखं धोविस्सति ।
IV उपासिका वत्थं पुजेस्सति ।
V गुणपालो पदीपं धारेस्सति ।
VI उपासका पुप्फानि ओचिनिस्सन्ति ।
VII धम्मपालो ब्यञ्जनं ददिस्सति ।
VIII याचका पानीयानि याचिस्सन्ति ।
IX कस्सको रथं आनेस्सति ।

X माता मूखं धोविस्सति ।

XI वानरो रुक्खं आरुहिस्सति ।

XII तापसा पोक्खरणिं अवतरिस्सन्ति ।

**वचन माला**

चिवरं --- चीवर

अन्नं --- आहार

पानं --- पानी

यानं --- वाहन (गाडी)

गेहं --- घर

वत्थं --- वस्त्र (लुगा)

वण्णं --- रंग

सुगन्धं --- सुगन्ध (बास्ना)

व्यञ्जनं --- व्यञ्जन (तरकारी)

मंसं --- मासु

पुगं --- सुपारी

चुण्णं --- धूलो

मूखं --- मुख

सुखं --- सुख

पुरिसं --- पुरुष

उपासको --- उपासक

राजा --- राजा

उपासिका --- उपासिका

कस्सको --- किसान

गुणपालो --- गुणपाल

धम्मपालो --- धम्मपाल

**क्रियापद**

याचिस्सति --------- माग्नेछ

धोविस्सति --------- धुनेछ

आनेस्सति --------- ल्याउनेछ

धारेस्सति --------- धारण गर्नेछ

अवतरिस्सति --------- तर्नेछ

धाविस्सति --------- दौडिनेछ

आरुहिस्सति --------- चढ्नेछ

ओचिनिस्सति -------- टिप्नेछ

वर्तमान क्रियाको बीचमा 'इस्स' प्रत्यय राख्दा भविष्य क्रिया बन्छ। यो कुरा ख्याल राख्नाले भविष्यकाल क्रिया बनाउन सजिलो हुन्छ।

<u>अभ्यास</u> :–

(१) **माथि (आ)मा भएका वाक्य नेपालीमा लेख्नुहोस्।**

(२) **तल भएका वाक्य पालिमा लेख्नुहोस्।**

I हामीहरू घरमा जानेछौं।

II उपासकहरू खुसीले बस्नु हुनेछन्।

III कुमार हुनेछ।

IV पियदासले रुख काट्नेछ।

V किसानहरूले मान्छेलाई हेर्नेछन्।

(३) **तल दिइएका भविष्यकाल क्रियापद प्रयोग गरेर पांचवटा बाक्यहरू बनाएर देखाउनुहोस्।**

**उदाहरण: भिक्खवो धम्मं देसिस्सन्ति।**

I हरिस्सति

II नमस्सन्ति

III लभिस्सति

IV गमिस्सति

V धाविस्सन्ति

# छट्ठो पाठो
# छैठौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | भविष्य काल, मध्यम पुरुष, एकवचन/बहुवचन वाक्य (वचन) बनाउने बारेमा परिचय । |
| II | निपात पद वाक्यहरूमा (वचनहरूमा) कसरी राख्ने (लेख्ने) बारेमा परिचय |

(अ) त्वं सायं आपणं गमिस्ससि ।
तिमी सांझ पसलमा जानेछौ ।

तुम्हे सायं आपणानि गमिस्सथ ।
तिमीहरू साँझ पसलमा जानेछौ ।

(आ)

| | | | |
|---|---|---|---|
| त्वं | सकटं पस्सिस्ससि ?<br>कुहिं खेत्तं कसिस्ससि ?<br>पानीयं पिविस्ससि ?<br>सुवे सिप्पं लभिस्ससि ?<br>पातो छत्तं ददिस्ससि ?<br>इदानि धम्मसालं गमिस्ससि ?<br>बुद्धं वन्दिस्ससि ? | तुम्हे | सकटे पस्सिस्सथ ?<br>कुहिं खेत्तानि कसिस्सथ ?<br>पानीयानि पिविस्सथ ?<br>सुवे सिप्पानि लभिस्सथ ?<br>पातो छेत्तानि ददिस्सथ ?<br>इदानि धम्मसालायो गमिस्सथ ?<br>बुद्धं वन्दिस्सथ ? |

## वचन माला

### नाम पद

| | | |
|---|---|---|
| पानीयं | -------- | पानी |
| खेत्तं | --------- | खेत (जग्गा) |
| सिरिपादं | --------- | श्रीपाद |
| रथं | --------- | रथ |
| सिप्पं | --------- | शिल्प |
| फलं | --------- | फल |
| सकटं | --------- | रथ |
| छत्तं | --------- | छाता |
| दन्तं | --------- | दाँत |

### क्रियापद

| | | |
|---|---|---|
| पहरिस्ससि | --------- | हिर्काउनेछौ |
| पिविस्ससि | --------- | पिउनेछौ |
| छिन्दिस्ससि | --------- | काट्नेछौ |
| चरिस्ससि | --------- | हिँड्नेछौ |
| मारेस्ससि | --------- | मार्नेछौ |
| आगमिस्ससि | --------- | आउनेछौ |

### निपात पद

| | | |
|---|---|---|
| सायं | --------- | साँझ |
| पातो | --------- | बिहान |
| कदा | --------- | कहिले |
| सुवे | --------- | भोलि |
| इदानि | --------- | अहिले |
| अज्ज | --------- | आज |

**अभ्यास :–**

(१) **माथि (आ)मा भएका अभ्यास नेपालीमा अनुवाद गर्नुहोस् ।**

(२) **तल दिइएका वाक्य पालिबाट लेख्नुहोस् ।**

I तिमी विहारमा जानेछौ ।

II तिमीहरू कहिले परियत्ति शिक्षामा (स्कूलमा) जानेछौ ?

III तिमी भोलि खेत आरक्षा गर्नेछौ ।

IV तिमीहरू अहिले घर आउनेछौ ।

V तिमी बिहान भावना गर्नेछौ ।

(२) **तल दिइएका वाक्यहरूमा गल्ति भए त्यसलाई सच्याएर लेख्नुहोस् ।**

I तुम्हे पण्णसालं गच्छिस्ससि ।

II त्वं कदा भत्तं भूञ्जिस्सथ ।

III तुम्हे सुवे खेत्तं रक्खिस्ससि ।

IV तुम्हे सिरिपादं वन्दिस्ससि ।

V त्वं सायं धातु मन्दिरं गच्छिस्सथ ।

# सत्तमो पाठो
# सातौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | भविष्य काल, उत्तम पुरुष, एकवचन/बहुवचन वाक्य (वचन) बनाउने बारेमा परिचय । |

**(अ)** अहं लेखनं लिखिस्सामि ।
म चिट्ठी लेख्नेछु ।

मयं लेखानि लिखिस्साम ।
हामी चिट्ठीहरू लेख्नेछौं ।

**(आ)**

| | | | |
|---|---|---|---|
| अहं | पत्तं हरिस्सामि<br>आहारं भूञ्जिस्सामि<br>पदीपं जालेस्सामि<br>धजं पसिस्सामि<br>पण्णसालं गच्छिस्सामि<br>धम्मं सुणिस्सामि<br>आहारं ददिस्सामि | मयं | पत्तानि हरिस्साम<br>आहारानि भूञ्जिस्साम<br>पदीपे जालेस्साम<br>धजे पसिस्साम<br>पण्णसालायो गच्छिस्साम<br>धम्मे सुणिस्साम<br>आहारानि ददिस्साम |

## वचन माला

### नाम पद

| | |
|---|---|
| लेखनं --- चिट्ठी | सिखिं --- मयूर |
| आहारं --- आहार | केतुं --- झण्डा |
| पत्तं --- पात्र | सेतुं --- पुल |
| हत्थि --- हात्ति | ओदनं --- भात |
| सामिं --- स्वामी | कुसुमं --- फूल |
| सारथिं --- सारथि | सीसं --- टाउको (सिरस) |
| सेट्ठि --- धनवान | गीवा --- घाँटि |
| मन्तिं --- मन्त्री | अङ्गणं --- आगन |

### क्रियापद

| | | |
|---|---|---|
| लभिस्सामि | --------- | पाउनेछु |
| गमिस्सामि | --------- | जानेछु |
| वसिस्सामि | --------- | बस्नेछु |
| भायिस्सामि | --------- | डराउनेछु |
| जानिस्सामि | --------- | थाहा हुनेछु |
| ददिस्सामि | --------- | दिनेछु |
| जिविस्सामि | --------- | जिउनेछु |

### अभ्यास :–

(१) **माथि (आ)मा भएका वाक्य नेपालीबाट लेख्नुहोस् ।**

(२) **खालि ठाउँमा उचित पद छानेर भर्नुहोस् ।**

I अहं पत्तं ______________ । (ददिस्साम / ददिस्सामि)

II मयं बुद्धं ______________ । (वन्दिस्साम / वन्दाम)

III अहं पण्णसालायं__________। (वसिस्सामि / वसामि)

IV मयं धम्मं _____________। (सुणाम / सुणिस्साम)

V मयं धजं ________________। (पस्साम / पसिस्साम)

(३) **तल दिइएका क्रियापदहरू भविष्य (अनागत) क्रियापदमा लेख्नुहोस् ।**

| | | | |
|---|---|---|---|
| I | गच्छामि | I | लभामि |
| II | समादियामि | II | हराम |
| III | रक्खामि | III | गण्हामि |
| IV | नमामि | IV | करोम |
| V | वन्दामि | V | अनुमोदाम |
| VI | सुणाम | VI | पठामि |
| VII | पुजेम | VII | लिखाम |

(४) **तल दिएका क्रियापदहरूको सम्पूर्ण रुप चलान लेख्नुहोस् ।**

I धाविस्सति ___________ दौडिनेछ ।

II रुच्चिस्सति ___________ मन पर्नेछ ।

III करिस्साति ___________ गर्नेछ ।

IV समागच्छिस्सति ___________ जम्मा हुनेछ ।

V तस्सिस्सति ___________ डराउनेछ ।

# अट्ठमो पाठो
# आठौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | अतीत काल कर्म वाक्य बनाउने बारेमा परिचय । |
| II | अतीत काल, प्रथम पुरुष, एकवचन/बहुवचन वाक्य बनाउने बारेमा परिचय । |

(अ)

i बुद्धो धम्मं देसेसि । देवानं तं सुणिंसु ।

ii सिद्धत्थ कुमारो अभिनिक्खमि । सो अनोमानदिं तरित्वा पब्बजि ।

iii सो तापसो छब्बस्सं (छवस्सं) दुक्करकिरियं अकासि ।

iv सप्पुरिसा निबद्धं पुञ्ञाणि कत्वा परम्मरणा सुगतिं अगमिंसु ।

v व्याधा वनं गन्त्वा तयो मिगे मारेत्वा वाणिजस्स विक्किणिंसु ।

vi वानरा फलानि भूञ्जिंसु । कुमारा तं आलोकेसुं ।

vii सीलवा सत्तं कल्यानं मेत्तं फरि ।

viii बालको पाठं पठेसि । तस्य मित्तानं तं सुणिंसु ।

## वचन माला

### नाम पद

| | | |
|---|---|---|
| पदुमानि | ------ | कमल फूल |
| अभिनिक्खमणं | --- | अभिनिष्क्रमण |
| व्याधो | --- | सिकारी |
| वाणिजो | -------- | व्यापारी |
| वानरो | -------- | बाँदर |
| मिगो | -------- | मृग |
| सुगति | -------- | स्वर्ग |
| छब्बस्सं (छवस्सं) | --- | छ बर्ष |
| तापसो | -------- | तपश्वि |
| अनोमानदिं | -------- | अनोमा नदी |
| विहिं | -------- | धान |
| सुनखो | -------- | कुकूर |
| कनिट्ठ भाता | -------- | भाइ |
| भगिनी | -------- | बहिनी |

### क्रिया पद

| | | |
|---|---|---|
| फरि | ------ | फैलायो |
| विक्किणि | --- | बेच्यो |
| विहासि | --- | हाँस्यो |
| पेसेसि | -------- | पठाईयो |
| कालंमकासि | -------- | मऱ्यो । बित्यो |
| पापुणि | -------- | आयो |
| मिणि | -------- | रोप्यो |

(आ) अतीतकाल प्रथमपुरुष एकवचन/बहुवचन पद रूप यसरी बन्छ। (अतीतकाल क्रिया बनाउँदा क्रियापद अगाडि "अ" अक्षर राखेर वा नराखेर पनि बनाउन सकिन्छ।

<table>
<tr><td rowspan="2">प्रथम पुरुष</td><td>एक वचन</td><td>बहु वचन</td></tr>
<tr><td>सो (उनी)<br><br>अगच्छि<br>{गए}<br>गच्छि</td><td>ते (उनीहरू)<br><br>अगच्छिंसु<br>{गए}<br>गच्छिंसु</td></tr>
</table>

**अभ्यास :–**

(१) माथि (अ) मा भएका वाक्य नेपालीमा अनुवाद गर्नुहोस्।

(२) तल भएका अतीतकाल प्रथम पुरुष एकवचन क्रियापद बहुवचन क्रियापदमा लेखेर देखाउनुहोस्।

**उदाहरण :–**

i पब्बजि --- पब्बजिंसु।

ii फरि --- ...................... ।

iii अकारि --- .................... ।

iv चरि --- ...................... ।

v विहरि --- .................... ।

vi पापुणि --- ................... ।

vii अभासि --- .................. ।

(३) **तल दिएका वाक्य नेपालीमा अनुवाद गर्नुहोस् ।**

i सो ब्राम्हणा – कुमारो आचरियस्स सन्तिकं गन्त्वा सिप्पं उग्गण्हि ।

ii कस्सका विहिं मिणिंसु ।

iii व्याधा सुनखानं आहारं ददिंसु ।

iv भिक्खु राजकुमारानं धम्मं देसेसि ।

v कनिट्ठ भाता पदीपं जालेसि ।

# नवमो पाठो
# नवौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | अतीत काल मध्यम पुरुष एकवचन/बहुवचन वाक्य बनाउने बारेमा परिचय । |

**(अ)**

i त्वं कुहिं आगच्छो ?

ii त्वं मित्तस्स पोत्थकं अददो ।

iii त्वं नेपाल देसे आनन्दकुटी विहारं अपस्सो ।

iv त्वं महा मग्गे धावित्वा पुन खीप्पं आगच्छो ।

v त्वं मय्हं कन्दुकं अगण्हो ।

vi त्व हीयो पालि पोत्थकं अपठो ।

**(आ)**

i तुम्हे कुहिं आगच्छित्थ ।

ii तुम्हे मित्तानं पोत्थकानि अददित्थ ।

iii तुम्हे नेपाल देसे आनन्दकुटी विहारं अपसित्थ ।

iv तुम्हे महा मग्गे धावित्वा पुनं खीप्पं आगच्छित्थ ।

v तुम्हे मय्हं कन्दुकं अगण्हित्थ ।

vi तुम्हे हीयो पालि पोत्थकानि अपठित्थ ।

## वचन माला

### नाम पद

| | | |
|---|---|---|
| मग्गं | ------- | बाटो |
| पञ्जरं | -------- | पिँजडा |
| कलन्दको | -------- | लोखर्के |
| गुहासु | -------- | गुफामा |
| वनिता रूपानि | --- | स्त्री रूप |
| पक्क | -------- | पाकेको |
| पालि पोत्थकं | --- | पालि किताब |
| अम्ब फलानि | --- | आंप फलहरू |
| कन्दुकं | -------- | भकुन्डो |

### क्रिया पद

| | | |
|---|---|---|
| आगमो | ------- | प्रतिक्षा गऱ्यो |
| कीलो | -------- | खेल्यो |
| जहो | -------- | छोड्यो/त्याग्यो |
| दस्सो | -------- | देखायो |
| नदो | -------- | आवाज गऱ्यो |

### पूर्व क्रियापद

| | | |
|---|---|---|
| धावित्वा | ------- | दौडेर |

### निपात पद

| | | |
|---|---|---|
| कुहिं | ------- | कहाँ |
| खिप्पं | -------- | छिटो/शीघ्र |
| निबद्धं | -------- | जहिले पनि |
| परम्मरणं | -------- | मरेपछि |
| सत्तं | -------- | जहिले पनि |
| हीयो | -------- | हिजो |

अतीत काल मध्यम पुरुष एकवचन/बहुवचन पद रुप यसरी बन्छ।

| | एकवचन | बहुवचन |
|---|---|---|
| मज्झिम पुरुष | त्वं (तिमी)<br><br>अगच्छो<br>{गयौ}<br>गच्छो | तुम्हे (तिमीहरू)<br><br>अगच्छित्थ<br>{गयौ}<br>गच्छित्थ |

**अभ्यास :–**

(१) **तल दिइएका क्रियापदहरूमा अतीतकाल मज्झिम पुरुष एकवचन/बहुवचन पद लेख्नुहोस्।**

**उदाहरण :–**

| | अर्थ | | |
|---|---|---|---|
| याचि | माग्यो | अयाचो/याचो | अयाचित्थ/याचित्थ |
| गमि | गयो | | |
| चरि | हिँड्यो | | |
| धावि | दौड्यो | | |
| डसि | तोक्यो | | |

(२) **तल दिइएका वाक्य नेपालीमा अनुवाद गर्नुहोस्।**

i त्वं पञ्जरे कलन्दकं अपस्सो।

ii त्वं अजन्तागिरिं आरुहित्वा तत्थ गुहासु वनिता रुपानि अपस्सो।

iii तुम्हे उय्याने पक्कानि अम्बफलानि ओचिनित्वा मित्तानं अददित्थ।

# दसमो पाठो
# दसौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | अतीत काल, उत्तम पुरुष, एकवचन/बहुवचन बारेमा परिचय । |

(अ)

| | |
|---|---|
| अहं | पण्णसालं अगच्छिं ।<br>दीपम्हि अचरिं ।<br>बुद्धस्स पादे पुजेसिं ।<br>याचकस्स एकं रुपियं अददिं ।<br>सत्तुय्याने एकं सीहं अपस्सिं ।<br>भिक्खुस्स अपुजेसिं । |

(आ)

| | |
|---|---|
| मयं | पण्णसालयो अगच्छिम्ह ।<br>दीपेसु आगच्छिम्ह ।<br>बुद्धानं पादे पुजयिम्ह ।<br>याचकानं दस रुपियानि अददिम्ह ।<br>सत्तुय्यानिसु द्वेसीहे अपस्सिम्ह ।<br>भिक्खुनं अपुजयिम्ह । |

## वचन माला

### नाम पद

| | | |
|---|---|---|
| दीपम्हि | ------ | देशमा |
| पादे | -------- | पाद |
| रुपियानि | -------- | रुपैयाँहरू |
| गहलोकागारं | ---- | ग्रहलोक हेर्ने ठाउँ |
| सत्तुय्याने | --- | चिडियाखाना |
| साधुनं | -------- | राम्रो गरि (राम्ररी) |
| जनाधिपतिमन्दिरं | --- | राष्ट्रपति भवन |
| रत्तिभागे | --- | रात्रीमा |

### क्रिया पद

| | | | |
|---|---|---|---|
| अगच्छिं | ------ | गयो | एकवचन |
| अचरिं | -------- | हिँड्यो | |
| अपुजेसिं | -------- | पूजा गऱ्यो | |
| अददिं | ---- | दियो | |
| अपस्सिं | --- | हेऱ्यो | |

| | | | |
|---|---|---|---|
| सुणिम्ह | ------ | सुन्यो | बहु बचन |
| ओलोकयिम्ह | --- | हेऱ्यो | |
| अपस्सिम्ह | -------- | देख्यो | |
| विहरिम्ह | ---- | बस्यो | |
| अगच्छिम्ह | --- | गयो | |

अतीत काल, उत्तम पुरुष, एकवचन/बहुवचन पद रूप यसरी बन्छ ।

| | एक वचन | बहु वचन |
|---|---|---|
| उत्तम पुरुष | अहं (म)<br>अगच्छिं {गएँ}<br>गच्छिं | मयं (हामी)<br>अगच्छिम्ह<br>गच्छिम्ह {गयौँ}<br>अगच्छिम्ह<br>गच्छिम्ह |

**अभ्यास :–**

(१) **तल भएका वाक्य पालिबाट लेख्नुहोस् ।**

i म घर गएँ ।

ii हामीले माग्ने मान्छेलाई भात दियौं ।

iii मैले बच्चालाई किताब दिएँ ।

iv म साथीसँग पोखरीमा गएर नुहाएर घर आएँ ।

(२) **तल भएका वाक्य नेपालीबाट लेख्नुहोस् ।**

i मयं साधुकं धम्मं सुणिम्ह ।

ii अहं जनाधिपति मन्दिरं ओलोकयिं ।

iii मयं हीयो लुम्बिनि वने गन्त्वा स्तम्भ चेतिं च महाबो धिं च वन्दित्वा, महामायादेवि पोक्खरानि नहायित्वा रत्तिभागे गेहं आगच्छिम्ह ।

iv अहं वेसाखपुण्णमीदिने पुण्णचन्दं अपस्सिं ।

# एकादसो पाठो
# एघारौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | पालि भाषा अभ्यास गर्ने । |

(अ) एकवचन- अहं पबुज्झामि ।
बहुवचन- मयं पबुज्झाम ।

(आ) दिन चर्या

| | |
|---|---|
| अहं | पातो पबुज्झामि । |
| | मूखं धोवामि । |
| | बुद्धं वन्दामि । |
| | मेत्तं भावेमि । |
| | खीरं पिबामि । |
| | पोत्थकं पठामि । |
| | पातरासं भुञ्जामि । |
| | वत्थं परिदहामि । |
| | पितूपादं नमामि । |
| | मातुपादं नमामि । |
| | पाठलयं गच्छामि । |
| | सिप्पं उग्गण्हामि । |
| | आचरियं नमामि । |

| | |
|---|---|
| अहं | गेहं आगच्छामि । |
| | दिवा आहारं भून्जामि । |
| | थोकं विस्सामि । |
| | मातापितूनं उपकारं करोमि । |
| | कीलामि । |
| | सरीरं सोधेमि । |
| | रतनत्तयं वन्दामि । |
| | सायमासं गण्हामि । |
| | मातरं च पितरं च वन्दामि । |
| | सयामि । |

## वचन माला

### नाम पद

मेत्तं ------ मैत्री

पातरासं --- प्रातः आहार

दिवाआहारं --- दिवा आहार

सायमासं -------- रात्री आहार

वत्थं -------- वस्त्र (लुगा)

पीतुपादं -------- बुबाको पाउ

मातुपाद -------- आमाको पाउ

कीलं ------ खेल

सरीरं -------- शरीर

मातुपितून्नं -------- आमाबुबालाई

खीरं -------- दुध (क्षीर)

| | | |
|---|---|---|
| रत्तनत्तयं | -------- | त्रिरत्न |
| पातोव | -------- | बिहानै |

<u>**क्रिया पद**</u>

| | | |
|---|---|---|
| पबुज्भामि | ------- | उठ्छु |
| भावेमि | -------- | गर्छु (भावना) |
| परिदहामि | -------- | बनाउँछु |
| विस्सामि | -------- | आराम लिन्छु |
| सोधामि | -------- | धुन्छु |
| सयामि | -------- | सुत्छु |

<u>**निपात पद**</u>

| | | |
|---|---|---|
| थोकं | ------- | अलिकति |
| च | -------- | र |

<u>**अभ्यास :–**</u>

(१) **माथि (अ) र (आ) मा भएका पाठ नेपालीमा लेख्नुहोस् ।**

(२) **आफ्नो भाइको, दाइको, बहिनीको र दिदीको दिनचर्या सरल तरिकाले लेख्नुहोस् ।**

<u>**उदाहरण :–**</u>

मयं | पातोव पबुज्भाम ।
मूखं धोवाम ।
बुद्धं वन्दाम ।

(३) **माथि दिइएका दिनचर्यामा आउने क्रियापद वर्तमान काल प्रथम पुरुष/मध्यम पुरुष/उत्तम पुरुष/एकवचन – बहुवचनबाट**

**लेखेर देखाउनुहोस् ।**

**<u>उदाहरण</u> :–**

| | |
|---|---|
| पबुज्झति -------- | पबुज्झन्ति [प्रथम पुरुष] |
| पबुज्झसि -------- | पबुज्झथ [मध्यम पुरुष] |
| पबुज्झमि -------- | पबुज्झाम [उत्तम पुरुष] |

# द्वादसो पाठो
# बाह्रौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | विभक्तिको बारेमा परिचय । |
| II | पठमा/दुतिया विभक्तिमा लेख्ने पुल्लिङ्ग स्त्रीलिङ्ग नपुंसकलिङ्ग बारेमा परिचय । |

नामपदलाई भाषा ब्यवहारमा सहजरूपमा प्रयोग गर्नको लागी प्रत्ययहरू जोडेर बनाउनेलाई विभक्ति भनिन्छ । "सि,यो" आदि प्रत्ययहरू नामपदसंग जोडेर विभक्तिपद बनाइन्छन् । नामपदलाई रूपचलानमा सहयोग गर्ने हुनाले ती प्रत्ययहरूलाई नाम विभक्ति भनिन्छ । नामपदहरू रुपचलानमा "पठमा" आदि रूपमा प्रयोग गर्नेलाई विभक्ति भनिन्छ । पालि भाषामा विभक्ति नौ वटा छन् ।

१. पठमा
२. आलपन
३. दुतिया
४. ततिया
५. करण
६. चतुत्थि
७. पञ्चमि
८. छट्ठि
९. सत्तमि

यी मध्ये पठमा र आलपन, ततिया र करण, चतुत्थि र छट्ठिको विभक्तिरूप समान हुन्छ ।

नामपदहरूलाई स्वरान्त र हलन्त गरी दुइ भागमा विभाजन गरिएको छ । स्वर अक्षरबाट अन्तहुने शब्दलाई स्वरान्त भनिन्छ । ब्यञ्जन अक्षरबाट अन्त हुने शब्दलाई हलन्त भनिन्छ । पालि भाषामा हलन्त शब्दहरू विरलै भेटिन्छन् । नामपदलाई पनि पुलिङ्ग, स्त्रीलिङ्ग र नपुंसकलिङ्ग गरी तीन भागमा विभाजन गरिएको छ । नामपदलाई विभक्तिमा रूपचलान गर्दा पुलिङ्ग नामपदहरूलाई पनि अझ अकारान्त, आकारान्त, इकारान्त, ईकारान्त, उकारान्त, ऊकारान्त र ओकारान्तको रूपमा विभाजन गरिएको छ ।

त्यस्तै स्त्रीलिङ्गलाई आकारान्त, इकारान्त, ईकारान्त, उकारान्त, ऊकारान्त र ओकारान्तमा विभाजन गरिएको छ ।

त्यस्तै नपुंसकलिङ्गलाई पनि अकारान्त, आकारान्त, इकारान्त, ईकारान्त, उकारान्त, ऊकारान्त र ओकारान्तमा विभाजन गरिएको छ । यी हरेकमा प्रयोग हुने प्रत्ययहरू फरक फरक हुनेछ । । पालि अट्ठकथा ग्रन्थमा यो विभक्ति यसरी देखाइएको छ ।

अ) पचन्त (पठमा)

आ) उपयोग ( दुतिया)

इ) करण ( ततिया)

ई) सम्पदान (चतुत्थि)

उ) निस्सक्क (पञ्चमि)

ऊ)	सामि (छट्ठि)

ए)	भूम्म (सत्तमि)

ओ)	आलपन (आमन्त्रण)

**(अ)** "बुद्धो धम्मं देसेति" भगवान बुद्धले धर्म देशना गर्छ। यो वाक्यको (वचनको) बुद्धो भन्ने वाक्य (वचन) चाहिँ पठमा विभक्ति हो । अथवा कर्तृ हो । कार्य गर्नेलाई कर्तृ भनिन्छ ।

"बुद्धो धम्मं देसेति" भगवान बुद्धले धर्म देशना गर्छ। यो वाक्यको (वचनको) "धम्मं" भन्ने वाक्य (वचन) चाहिँ दुतिया विभक्ति हो । कुनै कार्यमा ग्रहण हुन्छ भने त्यो वाक्य (वचन) दुतिया विभक्तिबाट लेखिन्छ। बुद्धो धम्मं देसेति। भगवान बुद्धले केगर्छ ? देशना गर्छ । के देशना गर्छ ? धर्म देशना गर्छ । गर्नेमा ग्रहण हुने धम्मं (धर्म) हो । वाक्य (वचन) दुतिया विभक्तिमा हुन्छ । दुतिया विभक्तिलाई कर्म पनि भनिन्छ ।

**(आ)**

i) भिक्खु धम्मं देसेति ।

ii) मित्ता मय्हं गेहं गच्छति ।

iii) सिस्सो पोत्थकं पठति ।

iv) माता भगिनिया सद्धिं विहारं गच्छति ।

v) सिस्सो आचरियेन सद्धिं बुद्धं वन्दति ।

vi) अहं पाठसालायं गच्छामि ।

(इ) **अभ्यासका लागि :–**

| विभक्ति | पुरुष लिङ्ग | | स्त्री लिङ्ग | | नपुंसक लिङ्ग | |
|---|---|---|---|---|---|---|
| | एकवचन | बहुवचन | एकवचन | बहुवचन | एकवचन | बहुवचन |
| पठमा | बुद्धो | बुद्धा | वनिता | वनिता वनितायो | फलं | फले |
| कर्तृ | बुद्ध | बुद्धहरू | केटी | केटीहरू | फल | फलहरू |
| दुतिया | बुद्धं | बुद्धे | वनितं | वनिता वनितायो | फलं | फले फलानि |
| कर्म | बुद्ध | बुद्धहरू | केटी | केटीहरू | फल | फलहरू |

(ई) **अझै केही नामपदहरू :–**

| पुल्लिङ्ग | स्त्रीलिङ्ग | नपुंसकलिङ्ग |
|---|---|---|
| धम्मो | गाथा | पापं |
| संघो | साखा | नगरं |
| मनुस्सो | उपासिका | पुञ्ञं |
| उपासको | पण्णसाला | खेत्तं |
| मित्तो | पाठसाला | छत्तं |
| देवो | कञ्ञा | सकटं |
| बालको | | वत्थं |
| पण्डितो | | सीलं |
| सीहो | | पादं |
| कुमारो | | चिवरं |

**वचन माला**

**नामपद**

भगिनि ——————— दिदी बहिनी

| | | |
|---|---|---|
| कण्डो | -------- | काण्ड (भाग) |
| नेत्तं | -------- | आँखा |
| कण्णो | -------- | कान |
| पाठसाला | -------- | कक्षा कोठा |
| रसवति | -------- | पकाऊने ठाउँ |
| सिनेहं | -------- | माया |

**क्रियापद**

| | | |
|---|---|---|
| भवति | ------- | हुन्छ |
| किलाभुमि | -------- | खेल्ने ठाउँ |
| सद्धिं | -------- | संग |
| पुरतो | -------- | अगाडि |
| चुम्बन्ति | -------- | चुम्बन गर्छ |

**अभ्यास** :–

(१) **माथि (आ) मा भएका वाक्य नेपालीमा लेख्नुहोस् ।**

(२) **माथि (ई) मा भएका नामपदबाट तीन वटा छानेर स्त्रीलिङ्ग/ पुरुषलिङ्ग / नपुंसकलिङ्ग / पठमा / दुतिया विभक्ति बनाएर लेख्नुहोस् ।**

(३) **तल दिइएका शब्दहरू राखेर खालि ठाउँ भर्नुहोस् ।**

(आहारं, पाठसालायं, धम्मं, लेखानि, पोत्थकानि)

i) अहं __________ सणामि ।

ii) त्वं __________ गच्छति।

iii) याचको__________याचति ।

iv) पिता पुत्तानं __________ ददन्ति ।

# तेरसो पाठो
# तेह्रौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | ततिया विभक्ति पदको बारेमा परिचय। |
| II | ततिया विभक्तिसँग लेख्ने निपातको बारेमा परिचय। |

(अ)

| |
|---|
| उपासकेन भिक्खु संघस्स दानं ददाति। |
| उपासकले भिक्षु संघलाई दान दिन्छ। |

यो वाक्यको "उपासकेन" भन्ने वाक्य ततिया विभक्तिबाट लेखेको छ। किनकी कुनै व्यक्तिलाई कसैलाई केही दिन्छ भने, दान गर्छ भने, परित्याग गर्छ भने त्यो क्रिया गर्ने व्यक्तिलाई चिनाउने ततिया विभक्ति पदले हो। त्यसकारणले दिने, गर्ने आदि वाक्य पद चिनाउनको लागी ततिया विभक्तिबाट लेखिन्छ। त्यस्तै गरी ततिया विभक्तिमा समं/सद्धिं/सह निपात पद पनि भेटिन्छ।

(आ) **केही नामपदहरू ततिया विभक्ति एकवचन/बहुवचनमा यसरी लेखिन्छन्।**

| एक वचन | बहु वचन |
|---|---|
| उपासकेन – उपासकले | उपासकेभि उपासकेहि – उपासकहरूले |

| | |
|---|---|
| मातरा/मातुया – आमाले | मातरेभि मातरेहि<br>मातुभि मातुहि – आमाहरूले |
| अग्गिना – आगोले | अग्गिभि अग्गिहि – आगोहरूले |

**(इ) सह, सद्धिं समं भन्ने निपातसंग ततिया विभक्ति लेख्ने तरिका ।**

i) भिक्खु उपासकेन सद्धिं विहारं गच्छति ।
ii) माता धीतुया सह पुप्फं पुजेति ।
iii) पुत्तो मातुभि च पितुभि च सद्धिं वापिं गमिस्सति ।
iv) अहं सिस्सेहि समं पोत्थकानि ओलोकेमि ।
v) तुम्हे कविहि सद्धिं एवं भासथ ।
vi) वनिता दारिकाय सह धम्मं सुणाति ।
vii) माता कञ्ञाय सह विहारं गच्छति ।
viii) पधानाचरियो सिस्सेहि सद्धिं बुद्धं वन्दति ।
ix) उपासका दारकेहि सद्धिं धम्मं सुणन्ति ।
x) त्वं भगिनिया सद्धिं धम्मपाठसालं गच्छसि ।

**वचन माला**

**नाम पद**

धीतुया सह -------- छोरीसँग
कवीहि सद्धिं -------- पण्डितहरूसँग
वनिता -------- केटी
सिस्सेहि समं -------- शिष्यहरूसँग
दारिका -------- बालिका

| | | |
|---|---|---|
| कञ्ञाय सह | -------- | स्त्रीसँग |
| भगिनिया सद्धिं | --- | बहिनीसँग |

**क्रिया पद**

| | | |
|---|---|---|
| देति | ------- | दिन्छ |
| देसेति | -------- | देशना गर्छ |
| दस्सेति | -------- | देखाउँछ |
| विनेति | -------- | शान्त गर्छ/शिष्ट गर्छ |

**अभ्यास** :–

(१) **माथि (इ) मा भएका वाक्य नेपालीमा लेख्नुहोस् ।**

(२) **तल दिएका ततिया विभक्तिपदहरू खालि ठाउँमा भर्नुहोस् ।**
(मित्तेहि सह, सिस्सेनसमं, ब्राह्मणेन सद्धिं, कविना सद्धिं, सप्पुरिसेन सद्धिं)

i) सेवको __________ अङ्गणं सम्मज्जति ।

ii) अहं __________ एवं भासामि ।

iii) मयं __________ धम्मं सुणाम ।

iv) तुम्हे __________ पाठसालं गच्छथ ।

v) त्वं __________ धम्मपाठसालायं उग्गण्हिस्ससि ।

(३) **माथि भरेका वाक्य नेपालीमा अनुवाद गर्नुहोस् ।**

(४) **तल दिएका नेपाली वचन पालिमा लेख्नुहोस् ।**

| | | |
|---|---|---|
| १. | बुद्धले | |
| २. | पण्डितसँग | |
| ३. | आमाहरूले | |
| ४. | आगोले | |
| ५. | सुत्पुरुषले | |
| ६. | साथीहरूसँग | |
| ७. | पितासँग | |
| ८. | बच्चीले | |
| ९. | मैले | |
| १०. | तिमीले | |

# चतुदसो पाठो
# चौधौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | करण विभक्तिको एकवचन/बहुवचन पद वाक्यहरूमा राख्ने तरिकाको बारेमा परिचय । |

(अ) "किसानले बन्चरोले रुख काट्छ ।" किसानले केले रुख काट्छ ? बन्चरोले रुख काट्छ। कर्तृको क्रियालाई विशेष उपकार हुने पद करण हो । त्यो पद करण विभक्तिबाट लेखिन्छ ।

**उदाहरण :–**

| |
|---|
| कस्सको फरसुना रुक्खं छिन्दति । |
| किसानले बन्चरोले रुख काट्छ । |

| |
|---|
| वेज्जो अगदेहि चिकिच्छति । |
| वैद्यले औषधीले चिकित्सा गर्छ । |

(आ)

i) कम्मकारो कुद्दालेन पठविं खणति ।

ii) सो धम्मेन जीवति ।

iii) बालका पुप्फेहि बुद्धं पुजेन्ति ।

iv) त्वं पुञ्ञकम्मेन दिब्बलोकं गमिस्ससि ।

v) तुम्हे फरसुहि रुक्खे छिन्दथ ।

vi) दुज्जनो पापेहि निरयं गच्छति ।

vii) अहं रथेन विहारं उपसंकमि ।

viii) मयं आहारेहि जीवाम ।

## वचन माला

### नाम पद

| | | |
|---|---|---|
| कम्मकारो | -------- | सुनार/लोहार |
| कुद्धालेन | -------- | कोदालोले |
| पठविं | -------- | पृथ्वी |
| भातरो | -------- | दाइ |
| दायको | -------- | दायक |
| दिब्बलोकं | -------- | स्वर्ग |
| कुल्लेन | -------- | डुङ्गाले |
| अगदेहि | -------- | औषधीहरूले |
| रोगो | -------- | रोग |
| गोणो | -------- | गोरु |
| फरसुना | -------- | बन्चरोले |
| पोतेन | -------- | नौकाले |
| समुद्दं | -------- | सागर |
| कितिच्छं | -------- | प्रतिकार |

### क्रिया पद

| | | |
|---|---|---|
| खणति | ------- | खन्छ |
| तरति | ------- | तर्छ |

**(इ) नामपदलाई करण विभक्ति एकवचन/बहुवचनहरूमा लेख्ने तरिका**

| एक वचन | बहु वचन |
|---|---|
| पुरिसेन --- पुरुष करणले | पुरिसेभि पुरिसेहि --- पुरुषहरू करणले |
| पक्खिना --- पँक्षीकरणले | पक्खिभि पक्खिहि --- पँक्षीहरू करणले |
| अग्गिना --- आगो करणले | अग्गिभि अग्गिहि --- आगोहरू करणले |

**अभ्यास :–**

**(१) माथि (आ) मा भएका पालि पाठ नेपालीमा अनुवाद गर्नुहोस् ।**

**(२) तल दिईएका वचनको अर्थ लेख्नुहोस् ।**

i) कुद्दालेहि
ii) धम्मेन
iii) पुप्फेन
iv) पुञ्ञकम्मेहि
v) फरसुहि
vi) पापेहि
vii) रथेन
viii) आहारेहि

**(३) तल दिइएका नेपाली वाक्य पालि भाषामा अनुवाद गर्नुहोस् ।**

**उदाहरण :–** बालको (बच्चाको) हातले मादललाई हान्छ ।
बालको हस्तेन भेरं पहरति ।

i) दाइले कमलफूलले बुद्धलाई पूजा गर्छ।

ii) उपासकले औषधीले रोग निको बनाउँछ।

iii) मान्छे ढुङ्गाले नदी तर्छ।

iv) तिमी आनन्दकुटी विहारमा र स्वयम्भूमा गएर बुद्धलाई फूलले पूजा गर्छौ।

v) तिमीहरु नौकाले सागर तर्छौ।

# पञ्चदसो पाठो
# पन्ध्रौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | चतुत्थि विभक्ति एकवचन/बहुवचन पद वाक्यहरूमा राख्ने तरिकाको बारेमा परिचय |

(अ) "पिता माग्ने मान्छेलाई भात दिन्छ ।" यो वाक्यको "माग्ने मान्छेलाई" भनेको वचन चाँहि दिएर पाउने व्यक्ति हो । त्यो व्यक्तिलाई चिनाउने पद चतुत्थि विभक्तिबाट लेखिन्छ । केही पाउनेलाई चिनाउने पदलाई "सम्प्रदान" पनि भनिन्छ अथवा चतुत्थि विभक्ति भनिन्छ ।

**उदाहरण :–**

| |
|---|
| पिता याचकस्स भत्तं ददाति । |
| पिता माग्ने मान्छेलाई भात दिन्छ । |

| |
|---|
| पुरिसा याचकानं आहारानि देन्ति । |
| पुरुषहरू माग्ने मान्छेहरूलाई आहार दिन्छन् । |

(आ)

i) बुद्धो भिक्खुस्स धम्मं देसेति ।

ii) उपासको भिक्खुस्स दानं देति ।

iii) जेट्ठ भातरो कनिट्ठाभातरानं वत्थानि ददन्ति ।

iv) त्वं मित्तस्स कन्दुकं दातुं रोचसि ।

v) तुम्हे सिस्सानं सिप्पानि देथ ।

vi) अहं पण्णसालस्स दीपं पुजेमि ।

vii) मयं इमानि मतकवत्थानि भिक्खु संघस्स देम ।

**वचन माला**

**नाम पद**

पुरिसा -------- पुरुषहरू

याचकस्स -------- माग्ने मान्छेलाई

जेट्ठ भातरो -------- ठूलो दाइ

कनिट्ठभातरो -------- सानो भाइ

**क्रिया पद**

रोचसि ------- मन पर्छ

(इ) **केही नाम पद चतुत्थि विभक्ति एकवचन/बहुवचनहरूमा लेख्ने तरिका**

| एकवचन | बहुवचन |
|---|---|
| याचकस्स --- माग्ने मान्छे लाई | याचकानं --- माग्ने मान्छे हरूलाई |

| | |
|---|---|
| सिस्ससस्स --- शिष्यलाई | सिस्सानं --- शिष्यहरूलाई |
| जेट्ठ भातुस्स --- ठूलो दाइलाई | जेट्ठ भातारानं --- ठूलो दाइहरूलाई |
| मित्तस्स --- साथीलाई | मित्तानं --- साथीहरूलाई |
| कनिट्ठ भातुस्स --- सानो भाइलाई | कनिट्ठ भातारानं --- सानो भाइहरूलाई |

<u>अभ्यास</u> :–

**(१) तल दिइएका वाक्य नेपालीमा अनुवाद गर्नुहोस् ।**

i) उपासका भिक्खुनं दानं देन्ति ।

ii) भिक्खु उपासकानं अट्ठंगसीलं देति ।

iii) मयं मित्तानं पोत्थकानि ददाम ।

iv) अहं मित्तस्स लेखनं लिखामि ।

v) त्वं बालकस्स कन्दुकं दातुं रोचसि ।

vi) तुम्हे सिस्सानं सिप्पं देथ ।

**(२) तल दिइएका खालि ठाउँमा चतुत्थि विभक्ति पद राखेर भर्नुहोस् ।**

i) पधानाचरियो __________ लेखनं लिखति ।

ii) दायका __________ पिण्ड देन्ति ।

iii) अहं __________ विज्जापोत्थकं ददामि ।

iv) मयं __________ पीठानि ददाम ।

v) त्वं __________ धनं ददासि ।

vi) तुम्हे __________ दानं देथ ।

(३) **तल दिइएका वचनहरू पालिबाट लेख्नुहोस् ।**

| | | | |
|---|---|---|---|
| i) | मानिसलाई | vi) | उपासिकाहरूलाई |
| ii) | साथीलाई | vii) | किसानलाई |
| iii) | आमाहरूलाई | viii) | राजालाई |
| iv) | व्यापारीहरूलाई | ix) | पिताहरूलाई |
| v) | बच्चालाई | x) | शिष्यहरूलाई |

# सोलसो पाठो
# सोह्रौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | पञ्चमी विभक्ति एकवचन/बहुवचन पद वाक्यहरूमा (वचनहरूमा) राख्ने बारेमा परिचय |
| II | पञ्चमी विभक्तिमा कुनै कुनै ठाउँमा "तो" प्रत्यय भेटिन्छ। त्यस्तो ठाउँको बारेमा परिचय |

(अ) "रुखबाट फल झर्छ।" यो वाक्यमा (वचनमा) फल झर्ने रुखबाट हो। कुनै ठाउँबाट कुनै चीज छुटेर जान्छ भने त्यो पद अपदान विभक्तिमा हुन्छ अथवा पञ्चमी विभक्तिमा हुन्छ।

उदाहरण :–

| |
|---|
| रुक्खम्हा फलं पतति। |
| रुखबाट फल झर्छ। |

| |
|---|
| दारको चोरस्मा भायति। |
| बच्चा चोरबाट डराउँछ। |

(आ)

i) स्वयम्भू पब्बतम्हा कट्ठमण्डपं नगरं दस्सति।

ii) मयं धेनुहि खिरं लभाम।

iii) सिस्सा पाठसालाय निक्खमन्ति।

iv)	त्वं विहारस्मा गच्छसि ।

v)	अहं आसनम्हा उत्तिट्ठामि ।

vi)	तुम्हे भिक्खुहि धम्मं सुणाथ ।

(इ) **पञ्चमी विभक्तिमा “तो” प्रत्यय लेखेको ठाउँ पालि भाषामा भेटिन्छ । त्यो एकवचन/बहुवचन दुबै वाक्यहरूमा भेटिन्छन् । तर “तो” प्रत्यय राखेर एकवचन रूपबाट मात्र लेखिन्छ ।**

i)	माता गेहतो निक्खमति ।

ii)	सिरि संघबोधि राजा नगरतो पलायित्वा अरञ्ञे अट्ठासि ।

iii)	कुमारा विहारतो निक्खमित्वा गेहं अगमिंसु ।

iv)	त्वं चोरतो भायित्वा कुहिं गच्छसि ।

v)	अहं मातितो सिनेहं लभामि ।

vi)	तुम्हे पब्बतो ओतरित्वा इध आगच्छथ ।

vii)	मयं संयोजनतो मुञ्चित्वा निब्बानं लभिस्साम ।

**वचन माला**

**नाम पद**

| | | |
|---|---|---|
| धेनुहि | -------- | बाच्छोहरूबाट |
| खिरं | -------- | दुध |
| आरञ्ञं | -------- | बन |
| सिनेहं | -------- | माया |
| संयोजनतो | -------- | संयोजनहरूबाट |
| आसनम्हा | -------- | आसनबाट |

**क्रिया पद**

| | | |
|---|---|---|
| उत्तिट्ठामि | ------- | उभिन्छु |
| निक्खमति | ------- | बाहिर जान्छु |
| न सयसि | ------- | सुत्दैन |
| वदि | ------- | भन्यो |
| उस्सभि | ------- | उत्साह गर्छौं |
| युज्भस्सामि | ------- | युद्ध गर्नेछु |
| निलिनो अट्ठासि | ------ | लुकेर बसेको थियो |
| सन्दति | ------- | बग्छ |

**पूर्व क्रियापद**

| | | |
|---|---|---|
| संकुचित्वा | ------- | पट्याएर |
| पसारेत्वा | ------- | प्रसारण गरेर |

(ई) **पञ्चमी विभक्ति एकबचन/बहुवचनमा भिक्खु, कञ्ञा, नन्तु, चित् शब्द लेख्ने तरिका ।**

| | एक वचन | बहु वचन |
|---|---|---|
| पञ्चमि विभक्ति (अपादान) | भिक्खुना भिक्खुम्हा भिक्खुस्मा – भिक्षुबाट | भिक्खूभि भिक्खूहि – भिक्षुहरूबाट |
| | कञ्ञाय – कन्याबाट | कञ्ञाभि कञ्ञाहि – कन्याहरूबाट |
| | नत्तारा – नातिबाट | नत्तारेभि नत्तारेहि – नातिहरूबाट |
| | चित्ता चित्तम्हा – मनबाट | चित्तेभि चित्तेहि – मनहरूबाट |

<u>अभ्यास</u> :–

(१) **माथि दिइएका आ र इ मा भएका अभ्यासहरू नेपालीमा अनुवाद गर्नुहोस् ।**

(२) **तल दिइएका वाक्यहरू पालिबाट लेख्नुहोस् ।**

i) शिष्यहरू गुरुबाट शिल्प पढ्छन् ।

ii) मानिस घरबाट निक्लिन्छन् ।

iii) चरा रुखबाट उड्छ ।

iv) म पापबाट टाढा हुन्छु ।

v) तिमी इनारबाट पानी लान्छौ ।

vi) हामी गाउँबाट सहर जान्छौं ।

vii) तिमीहरू भिक्षुबाट धर्मदेशना सुन ।

(३) **कालुपकाला विजितो जितो च – अङ्गो च पङ्गो च गुतिज्जितो च पस्सि जही दुक्खमुलं अपरजितो मार बलं अजेसि । (इसिगिलि सुत्र)**

i) यो पालि पाठ पढेर नेपालीमा अनुवाद गर्नुहोस् ।

ii) यो पालि पाठमा पञ्चमी विभक्तिमा आउने "तो" प्रत्यय छुट्टाछुट्टै लेखेर शब्दको अर्थ लेख्नुहोस् ।

# सत्तदसो पाठो
# सत्रौं पाठ

**पाठको लक्ष्य :–**

| | |
|---|---|
| I | छट्ठि विभक्ति एकवचन/बहुवचन पद वाक्यहरूमा कसरी राख्ने भन्ने बारेमा परिचय । |

(अ) "शिष्य गुरुको कुर्सि ल्याऊँछ" । यहाँ कुर्सिको अधिकार गुरुलाई हुन्छ । त्यसकारणले कुनै अधिकारको बारेमा, कुनै सम्बन्ध बारेमा लेख्ने छट्ठि विभक्तिले हो अथवा सम्बन्ध विभक्ति हो । छट्ठिको अर्को नाम सम्बन्ध हो । त्यसै गरी अप्राणवाची शब्दमा पनि छट्ठि विभक्तिबाट लेखिन्छ ।

**उदाहरण :– "रुखको फल" "रुक्खस्स फलं"**

**उदाहरण :–**

| |
|---|
| कुमारो आचरियस्स पीठं आनेति । |
| शिष्य गुरुको कुर्सि (मेच) ल्याउँछ । |

(आ)

i) दारको मातुया ओवादं पटिपज्जति ।

ii) धनवन्तो अत्तनो धनं विस्सज्जेत्वा पुञ्ञानि करोन्ति ।

iii) त्वं तव साधकं मयहं पुत्तस्स अदासि ।

iv) अहं बुद्धस्स धम्मं सुत्वा धारेमि ।

